

# नेवाः देय् दबू



## नेवाः देय् दबू केन्द्रीय समिति

का.म.पा.-१७, पुष्पलालपथ, ताम्सीपाखा

का.जि.का.द.नं. ८८७/०५७/०५८
पान नं. ३०११५९१५७३
स.क.प.नं. १९३११

NEWA DEY DABOO

मिति : नेपाल संवत ११४१ यंलागा ९
२०७८ आसोज १४ गते



केन्द्रीय तथ्याङ्क विभाग
दर्ता नं.: ६८६
मिति: २०७८/६/१४

श्रीमान् महानिर्देशकज्यू,
केन्द्रिय तथ्यांक विभाग,
यें (काठमाडौं) ।

**विषय : राष्ट्रिय जनगणना २०७८ मा जातिको नाम 'नेवाः' र भाषाको नाम 'नेपालभाषा' कायम गर्ने सम्बन्धमा ।**

महोदय,

उपरोक्त सम्बन्धमा राष्ट्रिय जनगणनाको लागि तथ्यांक विभागबाट प्रकाशित प्रश्नावलीमा जातजातिको नाम र कोड 'नेवार (६)' र भाषालाई 'नेवारी (६)' लेखिएको सम्बन्धमा हामी देशव्यापी फैलिएको नेवाः समुदायको प्रतिनिधित्व गर्ने साझा राष्ट्रिय संगठन नेवाः देय् दबू यस विभागको ध्यानाकर्षण गराउन चाहन्छौं । नेपालमण्डल क्षेत्रका आदिवासी समुदायको आधिकारिक नाम 'नेवाः' र उक्त समुदायले बोलिने मातृभाषा 'नेपालभाषा' भन्ने प्रमाण ऐतिहासिक शिलालेख तथा दस्तावेजहरुमा उल्लेख छ । साथै हामी स्वयम्ले आफ्नो जातिको परिचय 'नेवाः' र मातृभाषा 'नेपालभाषा' भनी चिन्ने चिनाउने गरेकाछौं । सही शब्द प्रयोग नगर्नाले तथ्यांक नै गलत आउन सक्ने र विश्वासनीयतामा समेत प्रश्न उठ्न सक्ने विषयमा सचेत भई 'नेवाः' र 'नेपालभाषा' भन्ने शब्दावलीलाई जनगणनाको प्रश्नावली, प्रतिवेदन लगायतका दस्तावेजहरुमा प्रयोग गर्न गराउन अनुरोध गर्दछौं ।

नेवाः समुदायको मातृभाषाको हकमा २०५२ सालमा नेपाल सरकारबाट तत्कालीन प्रधानमन्त्री मनमोहन अधिकारीको अध्यक्षतामा बसेको मन्त्रिपरिषद्को बैठकमा 'नेवारी' शब्दलाई 'नेपालभाषा' भनी सम्बोधन गर्न निर्णय भएको स्मरण गराउन चाहन्छौं । साथै विभिन्न नगरपालिकाहरुद्वारा स्थानीय भाषाका रुपमा 'नेपालभाषा' लाई आधिकारिक मान्यता दिएको छ भने नेपालभाषा नै भनी सम्बोधन गरेको पाइन्छ । त्यसै गरी त्रिभुवन विश्वविद्यालय अन्तर्गत 'नेपालभाषा केन्द्रिय विभाग' स्थापित भई पठनपाठन अध्यापन अनुसन्धान कार्य जारी छ ।

तसर्थ नेवाःहरुको साझा राष्ट्रिय संगठन नेवाः देय् दबू राष्ट्रिय जनगणना सम्बन्धी देहाय बमोजिम माग गर्दछौं

१. हाल कोड नं ६ रहेको जातिको नाम 'नेवार' लाई संशोधन गरी 'नेवाः' कायम गर्न र कोड नं ६ रहेको भाषाको नाम 'नेवारी' लाई संशोधन गरी 'नेपालभाषा' कायम गर्न हुन ।

२. जनगणनाको क्रममा भाषाको सवालमा 'नेवाः भाय्', 'नेवार भाषा', 'नेवारी भाषा' वा 'नेपालभाषा' भन्ने उत्तर प्राप्त भएमा कोड नं ६ मा उल्लेख गर्न गराउन भनी गणक, सुपरिवेक्षक लगायत जनगणनामा संलग्न सबैलाई जानकारी हुने गरी निर्देशन एवम् पत्राचार गर्न हुन ।

३. जनगणनाको प्रतिवेदन प्रकाशन गर्दा नेवाः र नेपालभाषा भनि प्रकाशन गर्न गराउन हुन ।

आशा र विश्वासका साथ हाम्रो समुदायको माग सम्बोधन हुनेछ भनि ज्ञापनपत्र बुझाएका छौं ।

सुभाय् । धन्यवाद ।

श्री उ.म.नि.ज्यू (सामाजिक)
६/१४

भवदीय,

नरेश कुमार ताम्रकार
अध्यक्ष

फोन नं.०१-४२६९०२९, फ्याक्स : ०१-४२६७६०५
Website : www.deydaboo.org, www.facebook.com/newadey.daboo, Email : deydaboo@ntc.net.np, nddproject@yahoo.com



# व्याख्या पत्र

## १. तथ्य संक्षेप

आउँदो राष्ट्रिय जनगणना नेसं ११४१ (२०७८) को प्रश्नावलीमा राष्ट्रिय तथ्याङ्क विभागले जातिको नाम 'नेवार' (६) र भाषाको नाम 'नेवारी' (६) भनी उल्लेख गरेका छन् । जातिको नाम 'नेवार' नभएर 'नेवाः' र भाषाको नाम 'नेवारी' नभएर 'नेपालभाषा' कायम हुनुपर्ने हाम्रो मागदाबि रहेको छ ।

## २. भाषाविज्ञान

२.१ भाषाविज्ञान अनुसार तिब्बती बर्मेली भाषा समूहहरूमा 'प' र 'व' ध्वनि परस्पर भएकाले *नेपाल* र *नेवाल* शब्दहरू पर्याय शब्दका रूपमा विकास भएको पाइन्छ । तिब्बती भाषामा 'वा' र 'पा'लाई पर्यायार्थी ढङ्गले प्रयोग गरिन्छ । जस्तै : श्यार्वा / श्यार्पा (शेर्पा), ल्होवा / ल्होपा (मुस्ताङका जाति), इत्यादी ।

२.२ हाल काठमाडौँ उपत्यका भनि प्रचलित स्थान नामको वास्तविक नाम *नेपाल उपत्यका* हो भनि ऐतिहासिक ग्रन्थलेखहरूले प्रमाणित गर्दछ । नेपाल उपत्यका आसपासका क्षेत्रहरू सहितको खण्डलाई *नेपाल मण्डल* भनिने गरिन्थ्यो / गरिन्छ । यही नेपाल उपत्यका र नेपाल मण्डलको मौलिक भाषा भएकाले *नेपालभाषा* नाम रहन गएको हो । नेपाल मण्डल नाम नेवाः समुदायमा अझै प्रचलित छ । नेवाः समुदायमा उपत्यकालाई *नेपाः गाः* (नेपाल खाल्डो) भनि चिनिन्छ । अहिले पनि उपत्यका बाहिरका ज्येष्ठ नागरिकहरूमा उपत्यकालाई नेपाल भन्ने प्रचलन हराएको छैन ।

२.३ नेपालभाषामा 'र' ध्वनि संवर्ण (Allophone) हो । 'र' ध्वनि नेपालभाषामा नवीनतम ध्वनि हो । पुरानो नेपालभाषामा 'र' ध्वनि थिएन । नेपालभाषी समुदायमा ऐतिहासिक कालखण्ड देखि धार्मिक भाषाका रूपमा संस्कृत र पालि भाषाहरू पनि प्रयोग हुनाले संस्कृत र पालि भाषामा भएका वर्णहरूको अक्षर अस्तित्वमा थियो । संस्कृतबाट आगन्तुक शब्दहरूमा हुने 'र' वर्ण नेपालभाषामा 'ल'को रूपमा अपनाइएको पाइन्छ । जस्तै : राक्षस - लाखस - लाखय्, राज्ञी - रानी - लानि, इत्यादी । कुनै व्यक्तिको नाम रत्नमान भए उसलाई लतंमां भन्निने, राममाया भएमा लामय् भनिने, रामबहादुर भए लामबाःचा, रामकृष्ण भए लामकिसंचा भनिने प्रचलन अझै रहेको पाइन्छ । नेपालभाषामा 'त, द' ध्वनि अपभ्रंश भएर 'र' भएको पाइन्छ । जस्तै :- पतासि - परासि - पर्सि / प्रासि (साडी), कतः - करः (अर्का), क्वःदल - क्वःरल (लड्यो), मदु - मरु (छैन), इत्यादी । नेपालभाषामा अझै पनि 'र' वर्णलाई समावेश नगरी लेखन गर्न सक्ने अवस्था छ । तसर्थ नेवाः समुदायमा नै नेवार नभएर नेवाल शब्दावलीको प्रचलनमा भएको देखिन्छ ।







२.४ नेपालभाषा ह्रस्वमय भाषा हो। पुरानो नेपालभाषामा दीर्घ ध्वनि थिएन। कालान्तरमा केही वर्णहरूको ध्वनि परिवर्तन वा लोप भई अगाडीको वर्ण दीर्घ भएको पाइन्छ। यी विभिन्न दीर्घ विकास मध्ये 'ल', 'ख', 'त', र 'व' वर्णहरू 'अ'मा परिवर्तन भई त्यस अगाडीको वर्णसँग सन्धी भई दीर्घ हुने गरेको पाइन्छ। जस्तै :- जल - जः (किरण), लख - लः (पानी), खत - खः (खट), खव - खः (हो), गलपत - गःपः (घाँटी), इत्यादी। समसामायिक नेपालभाषामा दीर्घ वर्ण विकास भएतापनि यी शब्दहरू पछाडी विभक्ति प्रयोग गर्दा मूल ह्रस्व वर्ण निकाल्ने गरेको पाइन्छ। जस्तै : पानी - लः, पानीमा - लखय्, पानीबाट - लखं। खट - खः, खटमा - खतय्, खटबाट - खतं। त्यसै गरी नेपाल र नेवाल शब्दहरू समसामायिक नेपालभाषामा नेपाः र नेवाः भनि प्रयोग गरेको पाइन्छ।

### ३. जन-अपनत्व

३.१ नेवाः जाति स्वयंमा प्रचलित नाम 'नेवाः' हो भन्ने de facto तथ्य हो। नेवाः जातिले स्थापना गरेका संघसंस्थाहरूले पनि यसै तथ्यको प्रतिनिधित्व गर्दछ। यसको एउटा ज्वलन्त उदाहरण देशव्यापी फैलिएको हामी नेवाः जातिको राष्ट्रिय संगठन नेवाः देय् दबू पनि हो। नेवाः जातिमा 'नेवाः' शब्द नै प्रचलित रहेको कुरामा कुनै दुईमत छैन।

३.२ जनस्तरमा नेपालभाषा सम्बन्धी स्थापना भएका गुथि, खलः, पुचः, संघसंठनहरूले पनि नेपालभाषा नामकै व्यवहार गर्दछन्। केही उल्लेख्य संघसंस्थाको चर्चा गर्नुपर्दा नेपालभाषाको विकासका निम्ति कार्यरत देशव्यापी फैलिएको *नेपालभाषा मंकाः खलः*, नेपालभाषाको प्राज्ञिक संस्थान *नेपालभाषा एकाडेमि*, नेपालभाषा परिषद्, इत्यादी रहेका छन्।

अतः नेवाः जातिमा 'नेवाः' शब्दकै अपनत्व र नेपालभाषी समुदायमा 'नेपालभाषा' शब्दकै अपनत्व रहेकोमा दुईमत छैन।

### ४. अन्तर्राष्ट्रिय कानून

४.१ United Nations Declaration on the Rights of Indigenous Peoples (UNDRIP) अन्तर्गत मुख्यतः Article 13 को 1 ले *Indigenous peoples have the right to revitalize, use, develop and transmit to future generations their histories, languages, oral traditions, philosophies, writing systems and literatures, and to designate and retain their own*





*names for communities, places and persons.* भनी उल्लेख गरेको छ । यस अर्थात् कुनै पनि आदिवासी समुदायले आफ्नो समुदाय, ठाउँ र व्यक्तिहरूको आफ्नो नामलाई निरन्तरता दिने र कायम गर्न पाउने अधिकारको सुनिश्चित भएको छ । सोही धाराको 2 मा *States shall take effective measures to ensure that this right is protected and also to ensure that indigenous peoples can understand and be understood in political, legal and administrative proceedings, where necessary through the provision of interpretation or by other appropriate means.* भनि उल्लेख भएको र राज्यलाई यस अधिकारको सुनिश्चित गर्ने दायित्व बहन गराएको छ । सोही UNDRIP को Article 1 मा *Indigenous peoples have the right to the full enjoyment, as a collective or as individuals, of all human rights and fundamental freedoms as recognized in the Charter of the United Nations, the Universal Declaration of Human Rights and international human rights law* उल्लेख गरिएको छ । यस धाराले आदिवासी समुदायलाई मानव अधिकार र मौलिक हक व्यक्तिगत र समूहगत दुबै तवरले सुनिश्चित गरेको छ । Article 3 मा *Indigenous peoples have the right to self-determination. By virtue of that right they freely determine their political status and freely pursue their economic, social and cultural development.* यस धाराले आदिवासी समुदायलाई आत्मनिर्णयको अधिकार सुनिश्चित गरेको छ । नेवाः जातिले आफ्नो जातिको नाम नेवाः र भाषाको नाम नेपालभाषा कायम हुनुपर्ने माग झण्डै एक शताब्दी देखिको नेवाः आन्दोलन र नेपालभाषा आन्दोलनले उठाउँदै आएको एवं मन्त्रीपरिषद्ले नै मान्यता दिइसकेको विषय हो । Article 8 को 1 ले *Indigenous peoples and individuals have the right not to be subjected to forced assimilation or destruction of their culture* उल्लेख गरेको छ । कुनै पनि भाषा र संस्कृतिको नाम त्यस भाषा र संस्कृतिको अस्तित्वसँग जोडिएको हुन्छ । [1]

४.२ Universal Declaration of Linguistic Rights को Article 31 मा *This Declaration considers the following to be inalienable personal rights which may be exercised in any situation : the right to the use of one's own name भनि उल्लेख छ भने Article 33 मा All language communities have the right to refer to themselves by the name used in their own language. Any translation into other languages must avoid ambiguous or pejorative denominations. भनि* उल्लेख छ ।[2]

[1] https://www.un.org/development/desa/indigenouspeoples/wp-content/uploads/sites/19/2018/11/UNDRIP_E_web.pdf
[2] https://unesdoc.unesco.org/ark:/48223/pf0000104267








४.३ नेपाल सन्धि ऐन, २०४७ बमोजिम उल्लेखित अन्तर्राष्ट्रिय कानूनहरूको पालना गर्नुपर्ने अन्तरार्ष्ट्रिय कानून अन्तर्गतको दायित्व हो ।

## ५. संविधान

नेपालको संविधान २०७२ धारा ६ ले नेपालमा बोलिने सबै मातृभाषाहरू राष्ट्रभाषा हुन् भनी उल्लेख गरिएको छ । नेपालभाषा नेपालको राष्ट्रभाषा भएकोमा दुईमत छैन । संविधानको धारा ३२ ले भाषा तथा संस्कृतिको हक सुनिश्चित गरेको छ । भाषाको नाम र सांस्कृतिक समुदायको नाम पनि भाषा र संस्कृतिको हकको अविछिन्न अङ्ग हो ।

## ६. सरकारी निर्णय

६.१ नेपालं संवत् १११६ (विसं २०५२) मा तत्कालीन प्रधानमन्त्री मनमोहन अधिकारीको अध्यक्षतामा मन्त्रीपरिषद्को बैठकले 'नेवारी भाषा' नभएर 'नेपालभाषा' भनि सम्बोधन गर्नुपर्ने भनि निर्णय गरेका थिए ।

६.२ नेपाल संवत् १११९ (विसं २०५५) मा तत्कालीन सञ्चारमन्त्री राधाकृष्ण मैनालीले सञ्चारमाध्यमहरूलाई 'नेवारी' नभएर 'नेपालभाषा' शब्दको प्रयोग गर्न निर्देशन पनि दिएका थिए ।

६.३ उपत्यका लगायतका विभिन्न स्थानीय सरकारमा नेपालभाषालाई स्थानीय भाषाका रूपमा मान्यता दिइएको छ । ती स्थानीय सरकारमा पनि 'नेपालभाषा' नामकै प्रचलन गरिएको छ । कीर्तिपुर नगरपालिकाको साँस्कृतिक संरक्षित क्षेत्र सम्वन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७८ को प्रस्तावनामा नेपालभाषा भनि उल्लेख गरिएको छ । हामीले केही समय अघि यी पालिकाहरूसँग पत्राचार गरि नेपालभाषा बारे सूचना माग गरेका थियौं । उक्त पत्राचारहरूले पनि यी स्थानीय तहले नेपालभाषा नामको प्रचलन गर्छन् भन्ने प्रमाण कागजका रूपमा उपयोगी हुन सक्छन् ।

६.४ नेपाल सरकारको स्वामित्वमा रहेको त्रिभुवन विश्वविद्यालयमा नेपालभाषा केन्द्रिय विभाग छ । नेपालभाषाको प्राज्ञिक अध्ययन अध्यापन गराउने उक्त संस्थानमा नेपालभाषामा स्नातक, स्नातकोत्तर र विद्यावारीधि समेत गराइन्छ । उक्त संस्थानको नाममा पनि नेपालभाषा शब्दकै प्रचलन छ ।







६.५ प्रेस काउन्सिलले नेपालभाषामा पनि प्रकाशन गर्ने गरेका छन् र त्यसमा पनि नेपालभाषा शब्दावलीकै प्रचलन गरिएको छ ।

https://www.presscouncilnepal.gov.np/np/tag/%E0%A4%A8%E0%A5%87%E0%A4%AA%E0%A4%BE%E0%A4%B2%E0%A4%AD%E0%A4%BE%E0%A4%B7%E0%A4%BE/

६.६ गोरखापत्रको बहुभाषिक संस्करण नयाँ नेपालमा नेपालभाषामा पनि प्रकाशन हुने गरेको छ र गोरखापत्रले पनि नेपालभाषा शब्दकै प्रचलन गर्ने गरेका छन् ।

https://gorkhapatraonline.com/viewer?file=https://gorkhapatraonline.com/ArchiveNewsFile/60a84c5aa7a43_nayanepal.pdf

## ७. पुस्तक तथा प्राज्ञिक सामाग्रीहरू

यस विषयवस्तु सम्बन्धी देहायका प्राज्ञिक सामाग्रीहरू उपयोगी हुन्छन् । यी मध्ये कतिपय सामाग्री नेपालभाषामै छन् । नेवाः जाति र नेपालभाषा सम्बन्धी अध्ययन गर्दा नेपालभाषामै लेखिएका सामाग्रीहरू छुट्याउन मिल्दैन । आफ्नो जाति सम्बन्धीका सामाग्रीहरू आफ्नै भाषामा हुनु स्वभाविक नै भयो । यस्ता अधिकांश प्राज्ञिक सामाग्रीहरू अरु भाषामा अनुवाद वा उपलब्ध छैन ।

| |
|---|
| नामः- धर्मादित्य धर्माचार्य व नेपाल भाषा व थ्वया साहित्य<br>लेखकः- चित्तधर 'हृदय'<br>प्रकाशकः- कलकत्ता नेपाल भाषा साहित्य गोष्ठी<br>सालः- नेसं १०८४<br>सम्बन्धित पाना नंः- पाना १९ देखि २४<br>लिङ्क :<br>https://archive.org/details/DharmadityaDharmacharyaVaNepalBhashaVaThwayaSahityaed.ChittadharHridaya/ |
| नामः- नेपाल खँग्वःया व्युत्पत्ति<br>लेखकः- कमल प्रकाश मल्ल<br>प्रकाशकः- नेपालभाषा पत्रिका<br>सालः- नेसं ११०० |





| |
|---|
| लिङ्क : https://archive.org/details/NepalKhangwoYaVyutpattiEtymologyOfTheWordNEPALKamalPrakashMalla |
| नामः- नेपालभाषाया ध्वाना सफूया धलः<br>लेखकः- कमल प्रकाश मल्ल<br>प्रकाशकः- लय्ता दबू<br>सालः- नेसं १०९९<br>लिङ्क : https://archive.org/details/nepalbhashayadhwanasaphooyadhalahed.kamalprakashmallaprefaceonly/ |

| |
|---|
| नामः- नेपाल र नेवाल<br>लेखकः- शिवराज शर्मा<br>प्रकाशकः- दार्जीलिङः गोर्खा पुस्तक सदन<br>सालः- विसं २०५४<br>लिङ्क<br>https://archive.org/details/nepal-ra-newal-moolatah-rigvaidik-shabda-by-shivaraj-sharma |




**८. सहयोगार्थः**

यस तथ्याङ्क विभागलाई यस विषयमा निर्णय गर्न गराउन देहायका निकायहरू सहयोगार्थ हुन सक्छन् ।

(क) नेपालभाषाका ऐतिहासिक ग्रन्थ अभिलेखको भण्डार रहेको पुस्तकालय एवं अभिलेखालय आशा सफू कुथि (काठमाडौं महानगरपालिका, कुलांभुलु, रक्तकाली) को आधिकारिक धारणा झिकाउन सक्ने सुझावार्थः छौं ।

(ख) नेपालभाषाको प्रज्ञा प्रतिष्ठानका रूपमा रहेका 'नेपालभाषा एकाडेमि' (कीर्तिपुर, न्यामासिमा, द्यःध्वाखा) को आधिकारिक धारणा झिकाउन सक्ने सुझावार्थः छौं ।

(घ) त्रिभुवन विश्वविद्यालय अन्तर्गत नेपालभाषाको विद्यावारिधी तह सम्म अध्यापन हुने नेपालभाषा केन्द्रिय विभाग (ललितपुर, पाटन संयुक्त क्याम्पस) को आधिकारिक धारणा झिकाउन सक्ने सुझावार्थः छौं । यस प्राज्ञिक निकायमा हामीले उल्लेख गरेको भन्दा अझै धेरै सामाग्रीहरू प्रदान गर्न सक्नेमा हामी ढुक्क छौं ।

**९. यस पत्रसाथ संलग्न**

१) Nagarpalika replies
Gorkhapatra coverage

***

मस्यौदा गर्ने व्यक्ति : रुक्शना कपाली (ललितपुर म.न.पा. - १६, ललितपुर)

